॥ श्री गणेशाय नमः ॥

# अथ लक्षवर्तिका दीपदानविधिः

कर्त्ताशुचिराचान्तः॥ दीपं प्रज्वाल्य नमोस्वनन्तायेति दीपं संपूज्य॥अर्घस्थापनं कुर्यात्॥गङ्गे च यमुनेत्यादिना। अथ संकल्पः॥ अद्येत्यादि मम समस्त जन्म बाल्य यौवन वार्धक्या-वस्थोपार्जित कायिक वाचिक मानसिक सांसर्गिक सकलपापक्षयपूर्वकैहिकानेकविध-निरवधिक भोगान् भवानन्तरं श्रीपरमेश्वर प्रितिद्वारा विष्णुसायुज्यपद प्राप्तिकामो लक्षवर्त्तिका प्रज्वालनाङ्गभूत दीप कलश गणेश पूजनपूर्वक ब्रह्मा विष्णु महेश्वर पूजनं प्रधान देवता पूजनं चाहं करिष्ये॥ दीपं संपूज्य कलश गणेश पूजनं च कुर्यात्। अन्य कलशमध्ये इदं विष्णुरिति मन्त्रेण हैमश्रियापहितं विष्णुं पूजयेत्॥ तद्दक्षिणे ब्रह्मयज्ञानमिति सावित्रीसहितं ब्रह्माणं पूजयेत्॥ तदुत्तरे नमः शंभवायेति॥ मन्त्रेण उमासहितं शिवं पूजयेत्॥ प्रधान देवतां गङ्गां च षोडशोपचारैः

संपूज्य ।। ततः मनो जूतिरिरिति मन्त्रेण प्राणं प्रतिष्ठाय ।। ॐ सहस्त्र शीर्षेति ।। आसनन् ।। ॐ पुरुषएवेत्युपवेशनम् ।। ॐ एतावानस्येति पाद्यम् ।। ॐ त्रिपादूर्ध्वेतिअर्घम् ।। ॐ ततो विराडिति आचमनीयम् ।। ॐ तस्माद्यज्ञादिति आच्छादनम् ।। ॐ तस्मादश्वेति यज्ञोपवीतम् ।। ॐ तयज्ञमिति गन्धम् ।। ॐ तत्पुरुषेतिपुष्पम् ।। ॐ बृहस्पते इति वस्त्रम् ।। ॐ यवोसीति यवान् । ॐ ब्राह्मणोस्येति धूपम् ॐ चन्द्रमामन यत्पुरुष इति अञ्जलि करणम् ।। ॐ सप्तास्यासन्निति प्रदक्षिणां ।। इति संपूज्य गरुडं हंस बृषभं च संपूज्य ।। ततोऽङ्गपूजा ।। ॐ कालाय नमः शिरं पुजयामि ।। ॐ विष्णवे नमः ललाटं पूजयामि ।। ॐ वह्नये नमः नेत्रं पूजयामि ।। ॐ रवये नमः कर्णौ पूजयामि ।। ॐ दीप्ताय नमः नासिकां पूजयामि ।। ॐ निशाकराय नमः मुखं पूजयामि ।। ॐ रुद्राय नमः कण्ठं पूजयामि ॐ शेषाय नमः स्कन्धं पूजयामि ।। ॐ जगद्व्यापिने नमः बाहूँ पूजयामि ।। ॐ तेजोरूपाय नमः स्तनौ पूजयामि ।।

ॐ महेश्वराय नमः, नाभिं पूजयामि॥ ॐ विश्वरूपाय नमः, कटीं पूजयामि॥ ॐ जगतः प्रभवे नमः, गुदं पूजयामि॥ ॐ स्वप्राकशाय नमः उरू पूजयामि॥ ॐ स्वयंज्योतिषे नमः जानुनी पूजयामि॥ ॐ चतुर्व्यु हाय नमः गुल्फौ पूजयामि॥ जनाधिपाय नमः, पादौ पूजयामि॥ ॐ परब्रह्मणे नमः सर्वाङ्गं पूजयामि॥ ॐ धात्रे नमः पादौ पू०॥ विधात्रे नमः, जङ्घे पू०॥ स्त्रष्टे नमः उरू पू०॥ ॐ प्रजापतये नमः मेढ्रम् पूजयामि। ॐ परमेष्ठिने नमः कटीं पू०। ॐ अग्निरूपाय नमः नाभिं पू०। ॐ पद्मनाभाय नमः, हृदयं पू०। वेधसे नमः, बाहु पू०। ॐ दामोदराय नमः कण्ठं पू०॥ ॐ हिरण्यगर्भाय नमः मुखं पू०॥ ॐ ब्रह्मणे नम० शिरं पू०॥ ॐ विष्णवे नमः सर्वाङ्गम् पू० विशेषोपचारादिकं समर्थ्य॥ अथ दीपदानसंकल्पः अद्येहेत्यादि पूर्वसंकल्प सिद्धिरस्तु अमुकगोत्रायाः अमुकनाम्न्या देव्या मम समस्तजन्म वाल्ययौवनबार्द्धक्यावस्थोपार्जित कायिक

वाचिक मानसिक सांसर्गिक सकल पापक्षय पूर्वकैहिकानेकविघनिर वधिक भोगानुभवानन्तरं श्री परमेश्वरप्रीतये तिलतैलात्कान् घृताक्तान् वा सपादलक्षसंख्यकान् प्रज्वालितान् दीपान् श्री विष्णवे समर्पयामि नमः ॥ पृथक देवताराधनपक्षे ब्रह्मणे विष्णवे ईश्वराय देव्यै गंगायै तुलस्यै सूर्याय गणपतये समर्पयामिति वाक्यं नियोज्य समर्पयेत् ॥ अथ कांस्यपात्र रौप्यपात्रस्थ हेमवर्तिका दानमन्त्रः ॥ रौप्यपात्रस्थितं दीप हेमवर्त्तिसमन्वितम् ॥ कांस्य-पात्रेण सहितं ददामि व्रतपूर्तये ॥ ततो गोदानम् ॥ ततो पूर्णपात्रदानम् ॥ ततोभूयसी दक्षिणादानम् ॥ इदं व्रतम् मया देव कृतं प्रित्यै तव प्रभो ॥ न्यूनं सम्पूर्णतां यातु प्रसादात्तव केशव ॥ गृहीतोस्मि व्रत देव यद्यपूर्णोस्मियान्यहम् । तन्मे भवतु सम्पूर्णा त्वत्प्रसादाज्जनार्दनः । यस्य स्मृत्येति कायेन-वाचेत्यादिना परमेश्वरं समर्प्य ततो विसर्जनं कुर्यात् ॥

॥ इति लक्षवर्तिका दीपदान पूजाविधिः समाप्तः ॥



# अथ कार्तिके, माघे, वैशाखे वा लक्ष वर्तिकायाः सोद्यापनकथा

सूत उवाच—

आर्यावर्ते पुरा काचिद्वेश्याभूल्लक्षणाभिधा।
तस्याभुजङ्ग शूद्रोऽभूद्दासो नाम महाबलः॥ १॥

कार्तिकमा, या माघमा, या बैशाखमा उद्यापन सहित सपादलक्षवर्तिका दीप दान गरेको लाखवत्ति बालेको कथा, सुन्नाले के-के पापवाट मुक्त हुन्छन्। त्यो कुरो यो वामन पुराणको कथा सुन्नुहोस। सूतजी अठासि हज्जार शौनकादि ऋषिहरूका प्रति भन्नुहुन्छ—हे शौनकादि ऋषि, तपाईंहरू सुन्नुहोस् भनेर शौनकादिलाई सुनाएको कथा सुन्नहोस्। आर्यावर्त नाम गरेका देशमा लक्षणा नाम भएकी वेश्या थिइ। त्यसको भुजंग नाम भएको नाठो थियो शूद्रजाति अत्यन्त बलियो दास थियो॥ १॥

सा लक्षणा तु सुस्नाता स्थिता गोदावरीतटे।
बालवैधव्यदोषेण रुदन्ती कुररीमिव॥ २॥

ती लक्षणा गोदावरीका किनारमा बलिया प्रकारले स्नान गरेर बालखकालमा विधवा भएका दोषले न्याउली जस्ती भयेर रोइरहेकी थिइन्॥ २॥

मृतं पतिं पुरः स्थाप्य बन्धुभिः परिवारिताम्।
आक्रन्दती ततोवीक्ष्य शनैस्तां ग्रत्यपद्यत॥ ३॥

आफ्ना दाज्यू भाइहरूले चारै तर्फबाट घेरिएकी मरेका आफ्ना पतिलाई अगाडी राखेकी। दुःखित शब्दले चिल्लाएर रोएकी देखेर–विस्तारैभुजङ्ग नामक शूद्र नजीकमा आयो ॥ ३ ॥

लुठन्तीं भुवि कायेन मुहुर्घ्नन्ती मुहुर्मुहुः।
जडानामपि कारुण्यं जायतं तांतु पश्यताम् ॥ ४ ॥

आफ्ना शरीरले लुटपुटिएकी बारंबार छातिमा मुडकिले हानि रहेकी। यस्तो हृदयले दुःख मानेर रोएको देख्दा जडस्थावर वृक्षहरूलाई पनि दया उत्पन्न हुन्छ भने मनुष्यले देख्दा ता किन दया नलागोस ॥ ४ ॥

तदा सा लक्षणा वाक्यं स्वभुजङ्गमुवाचह।
कुलजानां तु नारीणां दशेयमतिदारुणा ॥ ५ ॥

असलकुलमा पैदा भएका नारीहरू को अत्यन्त दुःखजनक यस्तो दशा हरे धिक्कार हो ॥ ५ ॥

अवस्थात्रयमेतासां तत्रेयं तु सुदारुणा।
कन्यात्वं जीवभर्तृत्वं विधवात्वमिति त्रिधा ॥ ६ ॥

सुवासीनी मानिसका तीन अवस्था हुन्छन्, ती तीन मध्ये यो विधवा हुनु जो हो अत्यन्त दुखःदायक छ। कुन–कुन तिन अवस्था भने कन्या, विधवा, सधवा, ई तीन अवस्था हुन्छन् ॥ ६ ॥

पारवश्यं च नारीणां दुःखमामरणान्तिकम्।
मृतापत्यत्ववैधव्ये तथैवाऽपुत्रता स्त्रियः ॥ ७ ॥

स्त्रीहरू को वाल्यावस्थामा पिताका वशमा, यौवनमा पतिका वशमा, वृद्धावस्थामा पुत्रका वशमा, जन्मदेखि मरणपर्यन्त दुःखैदुःखका दिन वित्तछन् सुखका दिन आउदैनन्। स्त्रीहरूको वालख जन्मदै मर्दै गर्नु विधवा हुनु फेरि त्यस्तै अपुत्र रहनु यी तीन अवस्था अती दुःखदायक छन् ॥ ७ ॥

असह्यमेतत्त्रितयं वैधव्यं तत्रचोत्तरम् ।
शोचन्तीनां च नारीणां कस्येदं कर्मणः फलम् ॥ ८ ॥

यी तीन असह्य दुःख छन् तेस्का मध्येमा विधवा हुनु अत्यन्त दुःख छ। जीवनभर शोक गर्ने भएका स्त्रीहरूको विधवा भएर बस्नुपरेको कुन कर्मको फल हो ॥ ८ ॥

निवर्त्ततेऽथकेनैव पृच्छन्तीमिति तामथ।
उवाच दासनामासौ भुजङ्गः सूनृतं वचः ॥ ९ ॥

कुन उपायले जन्मजन्ममा विधवा हुने दोष नाश हुन्छ भनेर सोधने भएकी लक्षणालाई अब उप्रान्त दास नाम भएको शूद्र सत्य बचनले भन्दछ ॥ ९ ॥

श्रृणु भद्रे प्रवक्ष्यामि स्त्रष्टासृष्टाःपुरा द्विजाः ।
देवानां चैव लोकानां हितार्थमन्त्रकोविदाः ॥ १० ॥

हे भद्रे ! सुन्नुहोस् म भन्दछु । पैल्हे ब्रह्माजीले देवताको र सबै लोकको हित होस् भन्नाका निमित्त वेद मन्त्रको अर्थ जान्ने ब्राह्मण सृष्टि गरे ॥ १० ॥

शास्त्रज्ञानात्स्वभावाच्च जीवनां यत्पुराकृतम्।
जानन्ति कर्मजफलं ते प्रष्टव्यो धृतव्रताः॥ ११॥

स्वभावैले शास्त्र जान्ने ब्राह्मण भएकाले जीवहरूले जो पैले पूर्व जन्ममा गरेको फल ती ब्राह्मणहरूसित सोध्न योग्य छ॥ ११॥

भुजङ्गवचनं श्रुत्वा तथैवमिति सा पुनः।
तत्रागतं महाबृद्ध याजकं नाम वै द्विजम्॥ १२॥

ती सुलक्षणाले आफ्ना नाठा भुजंगका वचन सुनेर, ठीक भन्यो बेसैभयो भनेर त्यहाँ आएका अतिवृद्ध याजक नाम भएका ब्राह्मणलाई सोधिन्॥ १२॥

पप्रच्छ तं तनादीना प्रश्नं चोत्तरमानसा।
मुने त्वहं दुराचारा वेश्यास्मि लक्षणाह्वया॥ १३॥

सान्तमनले भनिन् दीन भएर भनिन्—हे मुने ! म दुराचारिणी लक्षणा नाम भयेकी वेश्या हुँ॥ १३॥

तथापि ते दयापात्रं पृच्छन्ती मां सुबोधय।
साधनां समचित्तानां जनाः सर्वे समा भुवि॥ १४॥

तैपनि तपाईंलाई दयापात्र भएकाले सोधने भएकी मलाई संझाउनुहोस्। पृथ्वीतलमा समदर्शी साधुहरूको लागी सबै साना ठूला समान छन्॥ १४॥

दुर्गन्धो वा सुगन्धो वा यथा वायोः समोभवेत्।
मुने दशेयं नारीणां तृतीयाऽतीव दुःसहा॥ १५॥

वायुको जस्तै सुगन्ध दुर्गन्ध समान हुन्छ सबै ठाउमा बहन्छ। त्यस्तै हे मुने, यो तेश्रो नारीहरूको विधवा भएको दशा अत्यन्त दुःखले पनी सहन नसकिने हुन्छ॥ १५॥

कर्मणा जायते चैव केन वाऽथनिवर्तते।
एतद्विस्तार्य मे ब्रह्मन् कृपया वद सुव्रत॥ १६॥

यो वैधव्य दोष कुन कर्मले गर्दा हुन्छ कुन उपायले वैधव्य नाश हुन्छ। हे सुव्रत ! यो कुरो विस्तारपूर्वक मलाई दयागरेर बताउनु होस॥ १६॥

इति तस्या वचः श्रुत्वा याजको वाक्यमब्रवीत्।
दैवे कर्मणि पित्रे च नार्यः पाके व्यवस्थिता॥ १७॥

यस्ता लक्षणाका वचन मुनेर याजक नाम भएको ब्राह्मण पछि आउने कुरो भन्दछन्। देवकार्यमा, पितृ कार्यमा तथा भात आदि पकाउने काममा नारीहरू व्यस्त रहन्छन्॥१७॥

अकस्माच्च रजोदृष्ट्वापृष्ट्वा भाण्डाद्युपस्करान्।
अज्ञानाद्वाभयाद्वापिकामाल्लोभात्क्वचित्स्त्रियः॥ १८॥
अवेदयित्वा गच्छन्ति तेत दुष्यन्ति सत्क्रिया।
क्रियालोपगताह्येताःपापात्तस्मात्सुदुस्त्यजात्॥ १९॥

अकस्मात् रजभयेको रजस्वलाको रक्त देखेर पनि

नजानीकन या डरले या कामान्ध भएर लोभले स्त्रीहरू सत्कर्मलाई दूषित गराउछन्। सत्कर्मलाई लोप गराएर त्यो काटी नसक्नु पापवाट दुषित हुन्छन्॥ १९॥

दशामिमां प्राप्नुवन्ति सर्वानार्या न संशयः।
बाल्ये वा यौवनेवापि वार्धके वा कदाचन॥ २०॥

वाल्यावस्थामा, यौवन अवस्थामा, वृद्धावस्थामा नारीहरूले दुःख पाउँछन् यस्तो सहि नसक्नु दुःखको अवस्थामा प्राप्त हुन्छन् यसमा सन्देह छैन॥ २०॥

तत्र याति दुराचारा परान्नेवाभिकांछति।
श्वश्रोश्च पतिबन्धूनामतिचारात्सुदुस्सहात्॥ २१॥

त्यो रजस्वला भएका बेलामा पापिनी स्त्रीहरू दुराचारिणी भएर पर पुरुषको इच्छा गर्दछन् ससुरा पति दाज्यूभाईहरुको अतिचार अथवा छोएको खान दिनु, छुनु इत्यादि दुःखले सहि नसक्ने पाप गर्दछन्॥ २१॥

एतत्सहायतो नारी या लोपयती सत्क्रियाः।
बाल्ये वैधव्यमाप्नोति सा नारी नात्र संशयः॥ २२॥

पति ससुरा बन्धुहरूको स्पर्श आदि दोषका सहायताले जो स्त्री सत्कर्मलाई लोप गर्दछन्। त्यसै कारणले वाल्यावस्थामा विधवा हुन्छन् यसमा केही सन्देह छैन॥ २२॥

सा तत्कर्म सहायेन रजसा दूषिता च या।
मृता पत्या तथा भूत्वा वैधव्यं यौवने व्रजेत्॥ २३॥

त्यो रजस्वला दोषका सहायताले गर्दा दूषित भएकी छोरा-छोरी जन्मदै मर्दै गर्नाले दुःषित भएर यौवनावस्थामानै विधवा हुन्छे॥ २३॥

या नारी तु रजो दृष्ट्वा सर्वभाण्डादि शंकरम्।
कुरुते यदि सा नारी वैधव्यं वार्धके व्रजेत्॥ २४॥

—जो नारी रजस्वला भएको देखेर सबै भाँडा वर्तन छुन्छे त्यो चाहि वृद्धावस्था भएपछि विधवा हुन्छे॥ २४॥

याचानुकूल्य रहिता पति धर्मेषु सर्वदा।
बाल्ये वैधव्यमापन्ना गतिहीना भवेत् ध्रुवम्॥ २५॥

—जो स्त्री सधैं पतिको आज्ञानुसार चल्दीन पतिको धर्मले रहित भएकी छँदी वाल्यावस्थामा विधवा भएकी छँदी गति पनि पाउदीन॥ २५॥

सर्वासामपि वैधव्ये निदान पुष्पता चन।
शान्तिं तस्य प्रवक्ष्यामि कर्मणश्चापि लक्षणम्॥ २६॥

—सबै स्त्रीहरूको विधवा हुनमा कारण रजस्वला हुँदा मात्र होइन अरु पाप पनी छन् त्यसको शान्ति पनि म बताउछु, कर्मको लक्षण पनि वताउछु जुन कर्मले गर्दा विधवा हुन्छन्॥२६॥

कृते तु मुनिपञ्चम्या व्रते पाप च योषिताम्।
क्षयं गच्छति नारीणामिति वेदविदो विदः॥ २७॥

—वेद जान्ने विद्वान्हरूले भनेका छन् ऋषिपञ्चमीको व्रत गर्नाले नारीहरूको पाप नाश हुन्छ॥ २७॥

सूर्यस्य वायनं दत्वा कृते लक्ष्मीव्रतादिके।
मूलावशेष ब्रजति रजोदोषो न संशयः॥ २८॥

महालक्ष्मीको ब्रत १६ दिन गरेर नाङ्गलामा चामल दाल रूपिया आदि सर्जाम राखेर विद्वान् ब्राह्मणलाई दान गर्दा पनि नाश हुन्छ यस्ता अनेक व्रतछन् तर रजस्वलाका दोषका मूलजड़ नाश हुदैन दुभाको जरो जस्तो भएर बस्तछ यसमा केही सन्देह छैन॥ २८॥

निर्मूलं स व्रजत्याशु लक्षवर्ति व्रते कृते।
रजसोत्थं महापापं नारीणां नात्रसंशयः॥ २९॥

किन्तु लक्षवर्तिको व्रत गरेर सवालाख बत्ति वालेपछी रजस्वलाबाट पैदा भएको स्त्रीहरुको पाप तुरन्त निर्मूल भएर नाश हुन्छ यसमा केहि संदेह मान्नु पर्दैन॥ २९॥

इति तद्वचनं श्रुत्वा पुनः पप्रच्छ लक्षणा।
मनसा शंकिता भूत्वा सादरं मुनिपुङ्गवम्॥ ३०॥

—यस्ता याजकका वचन सुनेर फेरि लक्षणाले मनले शंकित भएर आदरपूर्वक मुनि श्रेष्ठसित सोधिन्॥ ३०॥

साधु साधु महाभाग चित्तं मे भयविह्वलम्।
लक्षवर्तिव्रतस्याऽस्या विधानं कीदृशं वद॥ ३१॥

हे महाभाग असल हो असल हो, मेरो चित्त डरले विह्वल भएको छ, यस लक्षवर्तिको विधिविधान के हो कस्तो गरी गर्ने हो मलाई भन्नुहोस्॥ ३१॥

कस्मिन्मासे तु कर्तव्यं कस्य वातत्समर्पणम्।
उद्यापनं कथं कार्य किं फलं तस्य वा मुने॥ ३२॥

यो लक्षवर्तिका व्रत कुन महिनामा गर्ने हो, कुन् देवतालाई त्यो व्रत गरेको व्रत अर्पण गर्नु, यो व्रतको उद्यापन कसरी गर्ने त्यो व्रत गर्नाले उद्यापन गर्नाले के फल पायिन्छ हे मुने? भन्नु होस्॥ ३२॥

तया पृष्टो याजकोऽपि लोकानां हितकाम्यया।
फलं विधानं तत्सर्वंप्रवदद्वदतांवरः॥ ३३॥

लसणाले सोधिएका ती याजक मुनिले समस्त लोकको हित होस भन्नाका निमित्त बोलनेमाका श्रेष्ठता मुनिले लक्षवर्तिको विधि विधान र त्यो व्रत गरेको फल समेत सबै लक्षणाई भन्दाभए॥ ३३॥

मुनिरुवाच—

लोमसस्य मुनीनां च संवादं कथयामि ते।
कालोहिकार्तिको मासो वैशाखो माघ एव वा॥ ३४॥

याजक नाम भएका मुनि भन्नुहुन्छ लोमस ऋषिको अरु मुनिहरुका साथमा संवाद भएका कुरो म तिमीलाई भन्दछू। समय सबैभन्दा उत्तम कार्तिक छ, बैशाख र माघ महीना पनि अत्यन्त उत्तम छन्॥ ३४॥

सहस्त्र गुणितं धत्ते व्रतं तन्मासि कार्तिके।
तस्मात् कोटिगुणं ब्रूतं माघमासि व्रतोत्तमम्॥ ३५॥

यो व्रत कार्तिक महीनामा गर्नाले हज्जार गुणा बढेर जान्छ, त्यो भन्दा करोड गुणा बढता माघ महीनामा गर्नाले व्रत उत्तम भएर जान्छ ॥ ३५ ॥

तस्मादनन्तगुणितं फलं वैशाखमासके।
एतस्मिन्मासत्रितये यस्मिन्मासेसमाप्यते ॥ ३६ ॥

माघ भन्दा पनि अनन्त गुणा धेरै फल बैशाख मासमा गर्नाले यी तीन महीनाका मध्येमा जुन महीनामा समाप्त गरे पनि हुन्छ ॥ ३६ ॥

तस्मान्मासद्वयात्पूर्व प्रारब्धस्यमिदं व्रतम्।
अन्तेमासि प्रकुर्वीत समाप्ति च विलक्षणः ॥ ३७ ॥

त्यो ब्रत समाप्त गर्नु भन्दा दुइ महीना पहिले व्रत गर्न आरम्भ गर्नु। विद्वानले महीनाका अन्तमा समाप्त गर्नु ॥ ३७ ॥

सहस्त्र वतिभिः कूर्यादाराति विष्णवेऽन्वहम्।
गोघृतेनाऽथतैलेन सस्यगुक्तैर्मनोहरैः ॥ ३८ ॥

धर्मशास्त्रमा बताएका विधिले विष्णु भगवानलाई प्रतिदिन गाईका घिउमा या तिलको तेलमा एक हजार बत्तीको आरती गर्नु ॥ ३८ ॥

यस्मिन्मासे समाप्तिःस्यात्पौर्णमास्यां तु कारयेत्।
उद्यापनविधानेन व्रतं सम्पूर्णकारकम् ॥ ३९ ॥

जुन महीनामा समाप्त गरे पनि कार्तिक महीना वा बैशाख माघमा उद्यापन व्रतलाई सम्पूर्णता गराउने समाप्ति ता पूर्णिमा मानै गर्नुपर्दछ र उत्तम फल मिल्छ ॥ ३ ॥

प्रातः स्नात्वा सुचिर्भूत्वा पञ्चगव्यन्तु प्राशयेत्।
पुण्याहवाचनं कृत्वा आचार्य वरयेत्ततः ॥ ४० ॥

प्रातः कालमा स्नान सन्ध्यादि गरेर शुद्ध वस्त्र लगाएर पञ्चगव्य खानू अनि पुण्याहवाचन गर्नु र त्यसपछिबाट मूल पुरोहित आचार्यलाई वरण गर्नु ॥ ४० ॥

त्रयोदशात्विजो भद्रे साग्निकान्वृणुयात्ततः।
सतिलैश्च यवैः कुर्यादग्नेनय ऋचा द्विजः ॥ ४१ ॥

त्यसपछिबाट तेह्र ब्राह्मणलाई वरण गर्नु—ती ऋत्विक, अग्निहोतृ अथवा विद्वान हुनुपर्छ। ती तेह्र जना ब्राह्मणले तिल जौ मिलाएर अग्नेनय यो मन्त्रले १२५० होम गर्नु ॥ ४२ ॥

वर्त्यादशांशतः कुर्यात्तर्पणं तु बिचक्षणः।
तर्पणस्य दशांशेन होमं कुर्याद्विचक्षणः ॥ ४२ ॥

विधिविधान जान्ने विद्वान्ले वत्तीको दशांश तर्पण गर्नु तर्पण को दशांश होम गर्नु विद्वान्ले ॥ ४२ ॥

तर्पणोक्तेन मन्त्रेण पायसं च घृतान्वितम्।
पलाससमिधश्चैव मन्त्रेणाऽनेन वैष्णवैः ॥ ४३ ॥

तर्पणमा बताएका मन्त्रले घिउले युक्त भएको पायस पलासका समिधा यो मन्त्रले वैष्णव ब्राह्मले होम गर्नु ॥ ४३ ॥

घृताञ्चविष्णु गायत्र्या होमस्यैष विधिस्मृतः ।
कलशेषु तथा स्थाप्याविधानं च सवस्त्रकम् ॥ ४४ ॥

विष्णु गायत्रीले घिउको होम गर्नु होम गर्ने विधि यस्तो बताएको छ धर्मशास्त्रमा कलशमा ढकनी वस्त्रले सहित भएको राख्नु ॥ ४४ ॥

सुवर्णप्रतिमां कृत्वा अग्न्युत्तारणपूर्वकम् ।
प्राणप्रतिष्ठया स्थाप्य प्राणांस्तस्यां समाहितः ॥ ४५ ॥

अग्निमा जलाएर शुद्ध गराएकी सुनको प्रतिमा बनाएर अष्टदल थालीमा लेखेर तेसमाथि स्थापना गर्नु मनोजूति इत्यादि मन्त्रले प्राणप्रतिष्ठा गरेर एकाग्र भएर स्थापना गर्नु ॥ ४५ ॥

आवाहनादि पुष्पान्तं पूजां कुर्याद्यथाविधि ।
तत्र तिस्त्रा रुक्ममय्यः प्रतिमाः कारयेत्ततः ॥ ४६ ॥

विधिपूर्वक आवाहनादि पुष्पाञ्जलिपर्यन्त पूजा गर्नु । तेसमा तिनवटा सुवर्णका प्रतिमाहरु राखेर तिनैमा पूजा गर्नु प्रतिमा भरसक ४।४ मासाका नसके यथाशक्ति बनाउनु ॥ ४६ ॥

श्रीया च सहितं देवं मध्यगं पूजयेद्धरिम् ।
तद्दक्षिणे चतुर्वक्त्र सावित्र्या सहितं तथा ॥ ४७ ॥

लक्ष्मीले सहित भएका माझमा बसेका हरि भगवान्को पूजा गर्नु । विष्णुका दक्षिण पट्टि सावित्रीले सहित भएका चतुर्मुखी ब्रह्माको पूजा गर्नु ॥ ४७ ॥

उत्तरे चोमया शम्भुं पुरतो गरुडं तथा।
कालो विष्णुस्तत्रवह्नी रविर्दीप्तो निशाकरः॥ ४८॥
रुद्रः शेषोजगद्व्यापी तेजोरूपी महेश्वरः।
निरञ्जन कलाध्यक्षो विश्वरूपी जगत्प्रभुः॥४९॥
स्वप्रकाशः स्वंयज्योतिश्चतुर्व्युहो जलाशय।
परब्रह्मेति द्विदश नामभिः पूजयेद्धरिम्॥ ५०॥

विष्णुका प्रतिमा देखी उत्तर पट्टि पार्वतीले सहित भएका शिवजीको प्रतिमा राखेर पूजा गर्नु, विष्णुको प्रतिमाका अगाडी गरुडजीको स्थापना गरेर पूजा गर्नु। विष्णुका २० वटा चतुर्थ्यन्त मन्त्रले विष्णुको पूजा गर्नु मन्त्र इ—हुन्- कालाय नमः, विष्णावे नमः, बह्नये नमः, रवये नमः, दीप्ताय नमः, निशाकराय नमः, रुद्राय नमः, शेषाय नमः, जगद्व्यापिने नमः तेजोरूपिणे नमः महेश्वराय नमः निरञ्जनाय नमः, कलाध्यक्षाय नमः, विश्वरूपे नमः, जगत्प्रभवे नमः, स्वप्रकाशाय नमः, स्वयंज्योतिषे नमः, चतुर्व्यूहाय नमः, जलाशयाय नमः, परब्रह्मणे नमः, यी सब मन्त्रले प्रत्येक अङ्गमा विष्णुको पूजा गर्नु॥५०॥

शिरोललाटके नेत्रे कर्णे नासि मुखे तथा।
कण्ठे स्कन्धे तथा बाहौ स्तनौ वक्षस्तथोदरे॥ ५१॥
नाभौ कटयां च जघने ऊरौ जानौ च गुल्फके।
पादौ तदग्रे क्रमशः अङ्गान्येन तु पूजयेत्॥ ५२॥

शिरमा, ललाटमा, कानमा, नाकमा, मुखमा, घाँटीमा, कांधमा, दुइ हातमा, स्तनमा, छातिमा, पेटमा, नाभिमा, कम्मरमा, तिघ्रामा, पिडुलामा, घुँडामा, कुरकुच्चामा, पाउमा, क्रमैले, यी अंगको पूजा गर्नु ॥५२॥

धूपं दीपं ततोदत्वा नैवेद्यं च निवेदयेत्।
यद्रव्यं लक्षपूजायास्तदद्रव्यं कनकस्य च॥५३॥

धूप दीप गरेर नैवैद्य चढ़ाउनु लक्ष पूजाको जो द्रव्य लेखिएको छ। त्यै द्रव्यले पूजा गर्नू सुनको प्रतिमा आदि सबै उही विधिले गर्नु ॥५३॥

कृत्वा निवेदयत्तस्मै पश्चात्पूजां समाचरेत्।
सुवर्णस्य सुवर्णस्य पूजाद्रव्यं प्रयत्नतः॥५४॥

अत्यन्त उत्तम सुनको पूजा गर्ने द्रव्य ठूलो यत्नले बनाएर भगवान्‌लाई निवेदन गर्नु र अनि पूजा गर्नु ॥५४॥

आवश्यकं तु कर्तव्यं व्रतोद्यापनकर्मणि।
भक्त्याच्च जगदात्मानं स्तुत्वादेवंक्षमापयेत्॥५५॥

व्रतोद्यापन कर्ममा आवश्यक सामग्री अवश्य तयार गर्नु। जगतका आत्मा स्वरूप भएका विष्णु भगवानको श्रद्धा भक्तिले स्तुति गरेर क्षमा माग्नु ॥५५॥

देवदेव जगन्नाथ भक्तानां कार्यकारकः।
त्वत्प्रसादादहंयाचे शीघ्रं कार्यप्रदो भव॥५६॥

हे देवताका पनि देवता जगत्‌कानाथ भक्तहरुको कार्य गर्नु-

भएकाले म हजुरसित प्रार्थना गर्दछु हजुरका प्रसादले माग्दछु, शीघ्रनै मेरो कार्य सिद्ध गर्ने हुनुहोस् ॥ ५६ ॥

अनेनैव विधानेन लक्षपूजां करोति यः।
पुत्रैः पौत्रैः प्रपौत्रैश्च सुखं प्राप्नोति निश्चितम् ॥ ५७ ॥

यसै विधानले लक्ष पूजा जसले गर्दछ, छोरा नाति पनाति-हरूले सहित भएर सुख निश्चय पाँउछ सन्देह छैन ॥ ५७ ॥

आचार्यं पूजयेत्पश्चात् ब्राह्मणनृत्विजस्तथा।
गौर्देया च सवत्सा वै सालङ्कारा गुणान्विता ॥ ५८ ॥

पैले आचार्यको पूजा वरणी गर्नु तेसपछि ऋत्विज ब्राह्मण-हरू को पूजा वरणी गर्नु अलंकारले सहित भएकी गुणले युक्त भएकी अथवा सिङ्गपासे लाउनु नपर्ने लात्तले नहान्ने सुदी-सादी गाई धैरै दूध दिने आचार्य ब्राह्मणलाई दिनु र व्रत पूर्ति हुन्छ ॥ ५८ ॥

त्रिंशत् पलं कांस्यपात्रं घृतेन परिपूरिम्।
सुवर्णवर्त्तिसंयुक्तमाचार्याय निवेदयेत ॥ ५९ ॥

तीस पल भनेको २ सेरको काँसको पात्र कचौरा भए पनी थाली भए पनी बनाएर घिउले भरी पारेर आधातोलाको सुनको बत्ति पनी बनाएर त्यही काँशका पात्रमा राखेर आचार्यलाई दान गर्नु ॥ ५९ ॥

अथवा तद्दशपलं तथा घृतसमन्वितम्।
अथवा तु यथाशक्ति दद्यादावयके त्विंदम् ॥ ६० ॥

अथवा तेतिको शक्तैन भने १० दश पल १० छटांक ३ तोला ४ माषाको कांस्यपात्र बनाएर घिउ भरेर सुनको बत्ति २ मासाको बनाएर कचौरामा राखेर दान गर्नु ॥ ६० ॥

व्रताभावेतु वै दद्यात्कांस्यं वै घृतपूरितम्।
यावज्जीवं जीवपतिर्भवत्येव न संशयः॥ ६१ ॥

यदि व्रन गर्न शक्तीन भने घिउले पूर्ण भरेको काँसको पात्र दान गर्नु सुनको बत्तिले सहित गराएर आफु बाचुन्जेलसम्म पति बाची रहन्छन् विधवा हुनु पर्दैन यसमा सन्देह मान्नु पर्दैन ॥ ६१ ॥

रजोदोषविमुक्तिः स्यात्पौर्णमास्यां ददाति या।
ब्राह्मणान् भोजयेत्पश्चाद्वित्तशाठ्यं न कारयेत्॥ ६२ ॥

जो स्त्री कार्तिक, माघ, वैशाख पूर्णिमामा यस्ता किसिमले काँसको पात्र दान गर्दछे। तेसको रजस्वलाबाट पैदा भएको पाप नाश हुन्छ। त्यसपछि ब्राह्मण भोजन गराउनु, धन खर्च गर्नमा कृपणी नहुनु ॥ ६२ ॥

एवं करोति या नारी तस्या पुण्यफलं श्रृणु।
अथ सर्वाणि पापानि रहस्यानि कृतानि वै॥ ६३ ॥

यस्ता प्रकारले काँशको पात्र दान ब्राह्मण भोजन जो स्त्रीले गर्दछे त्यसको के पुण्य हुन्छ त्यो सबै सुन म भन्दछु—त्यसले गुप्त गरी कसैले नदेखी गरेको पाप सबै नाश हुन्छन् ॥ ६३ ॥

नश्यन्ति तानि सर्वाणि व्रतस्याऽस्य प्रभावतः।
चाण्डालगामिनी वापि तथा शूद्राभिगामिनी॥ ६४॥

कारुकं रजकादीनां गामिनी दुष्टचारिणी।
ब्रह्मक्षत्रियविट् शूद्र प्रतिलोमाभिगामिनी ॥ ६५ ॥
मातुलेय पितृव्यादि भ्रातृपुत्राभिगामिना।
बालध्नी वा पतिध्नीवा माता पित्रोवधेरता ॥ ६६ ॥
गोघ्नी वा तस्करा वापि रजः संकरकारिणी।
एवमादि महापापैः रावृतापि कुलाङ्गना ॥ ६७ ॥
कृत्वा चैतत्व्रतं संम्यङ् मुच्यते नात्र संशयः।
व्रतानामुत्तमं चैतस्त्रीणांचावश्यकं त्विदम् ॥ ६८ ॥

यो व्रतका प्रभावले कुन-कुन पाप नाश हुन्छन् त्यो पनि म भन्दछु सुन—ब्राह्मणी भएर या उत्तम कुलकी स्त्री भएर पनि चाण्डालसित भोगको पाप, शूद्र सित भोग गरेको पाप सिकर्मी सित भोग गरेको पाप धोबीसित भोग गरेको पाप ब्राह्मण क्षत्रिय वैश्य शूद्र आदिसित प्रतिलोम विलोम गरी भोग गर्ने दूष्टाचरण गर्ने मामासित गुप्त भोग गर्ने कान्छा बाबुसित भोग गर्ने, भाई सित भोग गर्ने, बालकलाई मार्ने, पतिलाई मार्ने, माता पितालाई मार्ने, गाई मार्ने चोरनी, रजस्वला भएको नबारेर छातछूत गर्ने, यस्ता अनेक पापले युक्त भएकी कुलीन घरानकी स्त्री पनि गुप्त पाप गरेकी भए पनि यो व्रतमाको उत्तम व्रत स्त्रीकालागी अत्यावश्यक छ, यो व्रत गर्नाले यो माथि बताएका स्त्रीका पाप सबै नाश हुन्छन् यस्मा केही संदेह मान्नु पर्दैन ॥ ६८ ॥

एवं वर्ति दानेन विष्णोरमिततेजसः।
कोटयो ब्रह्महत्यानामगम्यागमकोटयः॥ ६९॥
तथैवात्युग्र पापानि कोटयोऽथ सहस्त्रशः।
नश्यन्ति नात्र सन्देहो नारीणां वा नरस्य च॥ ७०॥

यस्ता प्रकारले तेजको तुलना गरीनशक्ना विष्णु भगवान्–लाई जस्ले लाख बत्ति बाल्दछ तेसका १ करोड ब्रह्महत्या १ करोड भोग गर्ननहुनेसित भोग गरेको पाप तेस्तै हज्जारौं भयङ्कर उग्रपाप स्त्रीहरूका र पुरुषका पनि अनेक पाप पनि फड्केको रूओमा दियासलाई कोरेर लाउँदा जस्तो गरी सबै भस्म हुन्छन् तेस्तै गरी सबै पाप नास हुन्छन् यसमा संदेह छैन॥ ७०॥

सलक्षवर्त्तिभिर्विष्णोः कृतेचारार्तिकार्पणे।
किमत्र बहुनोक्तेन नानेनशदृशं व्रतम्॥ ७१॥

विष्णु भगवान्को सवालाख बत्तिले आरती अर्पण गर्छ यहाँ धैरै के भनौं भनेर के हुन्छ यो भन्दा ठूलो व्रत कुनै पनि छैन॥ ७१॥

पुरुषोऽपि व्रतं कृत्वा पूर्वोक्तैः पापसञ्चयैः।
मुच्यते नात्र सन्देहोप्रभुणामधुशासनात्॥ ७२॥

पुरुष पनि यो व्रत गर्छ भने पैले बतायेका पापका पुञ्ज बाट मुक्त हुन्छ, खास मधु नामक दैत्यलाई मार्ने भएका विष्णु भगवान्ले भन्नुभएको छ सन्देह छैन अवश्य नाश हुन्छ॥ ७२॥

एतत्सर्वमयाख्यातं पृच्छन्त्यास्तव मानद।
व्रतं कुरु सुखस्तिष्ठ यथाते रोचते मनः॥ ७३॥

हे मान दिने भयेकी लक्षणा, तिमिले सोधेको कुरा मैले सबै भने व्रत गर सुखपूर्वक वस या तिम्रो जस्तो रुचि हुन्छ उसैगर॥ ७३॥

इति तद्वचनं श्रुत्वा पुनः पप्रच्छ लक्षणा।
अज्ञानाद्दुष्टभावाद्वा नविश्वासो ममेह वै॥ ७४॥

यस्ता याजक नाम गरेका ऋषिका कुरा सुनेर फेरी लक्षणा याजक ऋषिसित सोद्धछिन्। अज्ञानले हो वा दुष्ट भावनाले गर्दा हो यो कुरामा मलाई विश्वास लाग्दैन निश्चय छ केले हो॥ ७४॥

प्रत्ययार्थं म ब्रह्मन् प्रत्यक्षं कुरुमेऽधुना।
इति तस्या वचः श्रुत्वा याजको वाक्यमब्रवीत्॥ ७५॥

मलाई विश्वास गराउनाका निमित्त हे ब्राह्मण ! यस बखत प्रत्यक्ष गराएर मलाई देखाउनुहोस् भन्ने यस्ता लक्षणाका वचन सुनेर याजक ऋषि यो वचन भन्न थाले॥ ७५॥

कथं तत्प्रत्ययोभूयात् कथ्यतां करुणानिधे।
सापिप्युवाच पुनर्विप्रं विस्मयोत्फुल्ललोचना॥ ७६॥

हे करुणानिधे ! यो व्रतको विश्वास कसरी हुन्छ भन्नुहोस, यो लक्षणाले भनेको सुनेर याजक ऋषिले फेरि लक्षणा ब्रह्मणसित आश्चर्यले उत्फुल्लनयन भएर भन्दछिन्॥ ७७॥

न वैधब्यभयान्नारी रोदित्येषा कुमारिका।
अस्याः पतिः कथं जावेत् वैधव्यं चैव गच्छति॥ ७८॥

ई कुमारी विधवा हुने डरले जसरी रुन्नन् यिनका पति कसरी बाँच्छन् विधवापन कसरी हट्दछ त्यो कुरा भन्नु होस॥ ७८॥

तथा कुरु मुनिश्रेष्ठ दया शमवतां धनम्।
इति तस्याः बचः श्रुत्वा विस्मितो वाक्यमब्रवीत्॥ ७९॥

हे मुनिश्रेष्ठ, समदर्शीको दयानै व्रत हुन्छ जसरी विधवापन हट्छ तेस्तै गर्नुहोस, यस्ता लक्ष्णाका वचन सुनेर आश्चर्य भएका याजक मुनि पछि आउने कुरो भन्न लाग्दा भए॥ ७९॥

अथ वै मकरं प्राप्तो भास्करो लोक भास्करः।
माघमासेऽथञ्च वरोलाभः सर्वक्रतुफलाधिकः॥ ८०॥

समस्त संसारलाई प्रकाश गर्ने सूर्य भगवान् मकरमा गए पछि यो माघ महिना सबैभन्दा श्रेष्ठ सबै यज्ञको अधिक फल दिने हुन्छ॥ ८०॥

अद्य गत्वा कुरु स्नानं गंगायां ब्रह्मचारिणी।
स्नानं कृष्णार्पण कृत्वा देहि तस्मै मृताय वै॥ ८१॥

आज माघ महिना छ हे ब्रह्मचारिणी, गंगामा गयेर स्नान गर। स्नान गरेर त्यो स्नान कृष्णार्पण गरीकन स्नान गरेको फल मरेको पति लासलाई देउ॥ ८१॥

तेन जीवेदयं नूनं सुरापी ब्रह्महापि च।
तस्मादयं राजयक्ष्मा रोगेण तु मृतिं गतः॥ ८२॥

तेसो गर्नाले रक्सी खाने ब्रह्महत्या गर्ने पनी बाँचने छ। तेस कारणले यी तिम्रा पुरुष क्षयरोगले मरेका हुन्॥ ८२॥

तथापि माघमासस्य पुण्यादुज्जीवितो ध्रुवम्।
दापयित्वा तथा वर्ति कांस्यपात्रं विधानतः॥ ८३॥

यस्तो क्षयरोगले मरेको भए ता पनि माघ महिनामा स्नान गरेर लाख बत्ती काँसको पात्रमा विधिपूर्वक दान गरेको पुण्य दिनाले त्यसै पुण्यका प्रभावले बच्यो निश्चय हो शक्ति हुनेले आचार्यलाई छाता जुत्ता लट्ठी, धोती, कमीज, दुहुनी गाई दोसल्ला शय्या दान भूमीदान समेत गर्नु शक्ति नहुनेले यथा शक्ति गर्नु काँसको पात्र सुनको बत्ति ता अवश्य गर्नैपर्छ॥ ८३॥

जीवपत्नीभवेदाशु यावदामरणान्तिकम्।
लक्षणा तद्वचःश्रुत्वा जलं स्पृष्ट्वाऽथ वाग्यता॥ ८४॥
स्नानं कृष्णार्पणं कृत्वा ददौ तस्मै फलं तदा।
तत्पुण्यस्य प्रभावेण तत्क्षणादेव बोधितः॥ ८५॥
स्वदेशं प्रेषयित्वा च कृत्वा पात्रं च कांस्यकम्।
कुमार्या दापयामास वैधव्यस्यापनुत्तये॥ ८६॥

ई वाचुञ्जेल तुरन्त पतिसहित भयेर बस्न पाउँछन् यस्तो वचन सुनेर लक्षणाले त्यो वचन सुनेर जल छोएर वाणीलाई

रोकेर मौन भएर गरेको स्नान कृष्णार्पण गरेर गरेको पुण्य सबै उनैलाई दिइन्। त्यो दिएका पुण्यका प्रभावले तेसैदिन मरेका पति निद्राबाट जागा भएजस्तै गरी जागेर उठेपछि आफ्ना देशमा पठाइदिए काँसको पात्र बनाउन लायेर ति कुमारी लाई दिन लगाए वैधव्य नहोस भन्नाका निमित्त काँसको पात्र दान गरेको कस्तो प्रभाव छ सुन ॥ ८६ ॥

एतत्पुण्यप्रभावेण कुमारी सापिसोभना।
तदाभवज्जीवपति बभूव बहुपुत्रिका ॥ ८७ ॥

यो पुण्यका प्रभावले ति कुमारी पनि अति सुन्दरी भइन्। तेसै दिनदेखी जीवित पति भयेकी भइन् धेरै छोराछोरी धन पुत्रले युक्त भएर बस्तीभइन् ॥ ८७ ॥

कुमारी शोभना नाम तत्पतिः कणभोजकः।
तद्बान्धवा तदा सर्वे तुष्टुवुस्तका सुलक्षणाम् ॥ ८८ ॥

शोभना नाम भएकी कुमारी र तिनका पति मणि भोजक नाम भएका दुवैजनाले र तिनका बान्धवहरूले स्तुति गरे सुलक्षणाको प्रशंसा गरे स्तुति पनि गरे ॥ ८८ ॥

याजकं चापि संपूज्य जग्मुस्तेस्वं निकेतनम्।
लक्षणापि च हर्षेण भुजङ्गेण च संयुक्त ॥ ८९ ॥

प्रातस्नानं ततः कृत्वा व्रतमेतच्चकार सा।
ततस्तु मरणं प्राप्तोदासस्तस्याः सहायकृत् ॥ ९० ॥

याजकलाई पनि पूजा गरेर ती सबै आफ्ना घरमा गए। लक्षणाले पनि हर्षलेयुक्त भएर भुजङ्गलेसहित भएर प्रातःस्नान गरेर यो व्रत गरिन् त्यो लक्षणाको सहायता गर्ने त्यो भुजङ्ग तिहाँदेखि मरेपछि उत्तम फल पायो ॥ १० ॥

गयो नाम महाराज चक्रवर्ती बभूवह।
सालक्षणा च तत्पत्नी सर्वलक्षणसंयुताम् ॥ ११ ॥

गय नाम भयेका चक्रवर्ती राजा भये। ती लक्षणा नाम भए की वेश्या पनि उनकी पत्नी सबै लक्षणले युक्तभयेकी छँदी ॥ १ ॥

बभूव लोक विख्याता जीवभर्ता सुपुत्रिका।
तस्माद्योमाघमासस्य सहाय्यं वा करिष्यति ॥ १२ ॥
धर्मस्य तत्फलं प्राप्य मुच्यते नाऽत्रसंशयः।
नित्यं स्नातुमशक्तश्चेत्कुर्यात् सतु दिनत्रयो ॥ १३ ॥

लोकविख्यात भइन् पति बाँच्ने सुपुत्र हुने भइन् जो मानिस माघमासको सहायता गर्दछ त्यो धर्मको फल सुन्नुहोस—फल पाउना साथ मुक्त हुन्छ जो नित्य स्नान गर्न सक्तैन ३ दिनमात्र गरे पनि त्यो फल पाइन्छ ॥ १३ ॥

द्वादश्यां रथसप्तम्यां पौर्णमास्यां तथैव च।
सोपि पूर्णफलं प्राप्य विष्णुलोके महीयते ॥ १४ ॥

यदि माघ महिनाभर स्नान गर्न नसके द्वादशी रथसप्तमी

पूर्णिमामा तीन दिनमात्र स्नान गरे पनी संपूर्ण फल पाएर विष्णु लोकमा पूज्य हुन सक्तछ ॥ ९४ ॥

तदेवं कर्म सफलं महापातकनाशनम्।
यो न स्नाति नरो माघे मकरस्थे दिवाकरे ॥ ९५ ॥
ब्रह्मा सवै तु विज्ञेयः सर्वकर्मसु गर्हितः।
नारीवापि नरोवापि न स्नायादरुणोदये ॥ ९६ ॥
रौरवं नरकं प्राप्य यावदाभूतसप्लवम्।
रोगैरुपहतो यस्तु पादौ पक्षाल्य वाग्यतः ॥ ९५ ॥

यो व्रत गरेको कर्म सफल भएर महापातकलाई नाश गर्दछ। जो मनुष्य मकर राशिमा सूर्य गएका वेला माघ महिनामा स्नान गर्दैन त्यो ब्रह्मघाती सबै कर्ममा निन्दित हुन्छ। स्त्री भये पनि पुरुष भयेपनि जो प्रातः अरुणोदयमा स्नान गर्दैन रौरव नाम गरेको नरकमा परेर महाप्रलय हुँदासम्म बस्नु पर्दछ। जो रोगी छ भने हातपाउ धोएर मौन भएर आचमन गर्नु ॥ ९७ ॥

द्यौतवस्त्रं परीधाय त्रिराचम्य तु वारीणा।
गायत्र्यामन्त्रितं चाम्भः प्रोक्षयेन् मूर्धिन सद्विजः ॥ ९८ ॥
सोपि स्नानाफलं प्राप्य मोदते विष्णु मन्दिरे।
ये च श्रृणवन्ति सततं ये पठन्ति नरोत्तमाः ॥ ९९ ॥
ते सर्वे पापनिर्मुक्त यास्यन्ति पदमव्ययम् ॥ १०० ॥

शुद्ध धोती बदलरे ३ पटक आचमन गर्नु आफ्नो गायत्री मनले अभिमन्त्रित गरेको जल शिरमा सेचन गर्नु र त्यो मनुष्य विष्णुलोकमा हर्षित भएर बस्न पाउँछ जो मनुष्य पढदछन् ति पनि सबै पापबाट मुक्त भएको छदो अव्ययपद फेरि फर्केर आउनु नपर्ने पदमा प्राप्त हुन्छन् ।

❁ इति वामनपुराणे पूर्वखण्डे लक्षवर्ति कथायां याजक सुलक्षणा संवादे लक्षवर्ति कथा समाप्त ❁